## ओ३म्..

## संस्कृत भाषाको महानता एवं उपयोगिता।




संस्कृतमा १७०० धातु, ७० प्रत्यय र ८० उपसर्ग छन्। यिनको योगबाट जुन शब्दहरु बन्दछन्, तिनको संख्या २७ लाख २० हजार हुन्छ। यदि दुई शब्दबाट बनेका सामासिक शब्दहरुलाई जोड्ने हो भने यिनको संख्या लगभग ७६९ करोड हुन्छ। संस्कृत सृष्टि-उत्पत्तिको प्रथम सबभन्दा प्राचीन भाषा हो र सबभन्दा वैज्ञानिक भाषा पनि हो। यसका सकारात्मक तरंगहरुका कारणले गर्दा नै धेरै भन्दा धेरै श्लोकहरु संस्कृतमा छन्। नेपालका स्वनामधन्य विद्वानहरु र तथाकथित् कम्निष्टहरुले संस्कृत भाषालाई सभ्यता विरोधी र विज्ञान विरोधी भनेर नेपालको विकाशमा प्रमुख वाधक मानेर यसलाई मेटाउन न्वारन देखिको बल लगाउँदैछन् र हामी पनि संस्कृत देखि विमुख हुँदैछौं तर विदेशमा संस्कृत प्रति रुझान बढ्दैछ।

ब्रह्माण्डमा सर्वत्र गति नै गति छ। गति हुनाको कारणले ध्वनि प्रकट हुन्छ । ध्वनिबाट शब्द परिलक्षित हुन्छन् र शब्दहरुबाट भाषाको निर्माण हुन्छ। आज संसारमा अनेकौं भाषाहरु प्रचलित छन्। तर यि सबको काल निश्चित छ। कुनै सय, कुनै पाँच सय वर्ष, कुनै एक-दुई हजार वर्ष अघि जन्मेका हुन्। साथै यी भिन्न भिन्न भाषाहरुको जन्म हुने बेलामा अन्य भाषाहरुको अस्तित्व पनि थियो। अतः पूर्वबाट नै भाषाको ज्ञान भएको हुनाले कुनै नयाँ भाषालाई जन्म दिनु अधिक

कठिनताको कार्य हैन। तर पनि साधारण मनुष्य द्वारा साधारण रीतिले बिना कुनै वैज्ञानिक आधार निर्माण गरिएका यी सबै भाषाहरुमा भाषागत तथा व्याकरणगत दोष देखिन्छन्। यी सबै भाषाहरु पूर्ण शुद्धता, स्पष्टता एवं वैज्ञानिकताको कसौटीमा राख्दा खोटा सावित हुन्छन्। किनकि यी केवल एकअर्काको भाव बुझ्ने-बुझाउने साधन मात्र र कुनै उद्देश्य बिना तथा कुनै सूक्ष्म वैज्ञानिक चिंतन बिना बनाइएका भाषा हुन्। तर मनुष्य उत्पत्तिको आरंभिक कालमा धरतीमा कुनै अन्य भाषाको अस्तित्व नै थिएन।

यो कुरो सोंच्न लायक छ कि कसरि भाषाको निर्माण संभव भयो होला?
शब्दको आधार ध्वनि हो, जब ध्वनि थीयो भने स्वाभाविक नै हो शब्द पनि थियो। तर व्यक्त भएका थिएनन्, अर्थात यिनको ज्ञान थिएन।
उदाहरणार्थ- कसैले भन्ने गर्दछन कि अग्निको आविष्कार फलानो समयमा भयो।

के त्यसभन्दा पहिले अग्नि थिएन र? अग्नि त धरतीको जन्म हुँदा देखि नै छ, तर यसको ज्ञान निश्चित समयमा भयो। यस्तै गरि शब्द र ध्वनि पनि थिए तर तिनको ज्ञान थिएन। तब ति प्राचीन ऋषिहरुले मनुष्य जीवनको आत्मिक एवं लौकिक उन्नति एवं विकासमा शब्दको महत्व र शब्दको अमरताको गंभीर आकलन गरे। उनीहरुले एकाग्रचित्त भएर ध्वानपूर्वक, पटक-पटक मुखबाट अलग-अलग प्रकारका ध्वनिहरु उच्चारित गरे र यहि जान्नको लागि प्रयासरत रहे कि मुख-विवरको कुन चाइ सूक्ष्म अंगबाट, कसरि र कहाँबाट ध्वनिले जन्म लिइरहेको छ। तत्पश्चात निरंतरको अथक प्रयास कै फलस्वरूप उनीहरुले परिपूर्ण, पूर्ण शुद्ध, स्पष्ट एवं अनुनाद क्षमताले युक्त ध्वनिहरुलाई नै भाषाको रूपमा चुने।

सूर्यको एकातिरबाट ९ रश्मिहरु निस्कन्छन् र सूर्यको चारै तिरबाट ९/९ भिन्न भिन्न रश्मिहरु निस्कनाले कुल ३६ रश्मिहरुको ध्वनिमा संस्कृतका ३६ स्वर बने र यी ३६ रश्मिहरु आठ वसुहरु संग ठोकिनाले ७२ प्रकारका ध्वनि उत्पन्न हुन्छन्। जसबाट संस्कृतका ७२ व्यंजन बने। यस प्रकार ब्रह्माण्डबाट निस्कने कुल १०८ ध्वनिहरुमा नै संस्कृतको वर्णमाला आधारित छ। ब्रह्माण्डका यी ध्वनिहरुको रहस्यको ज्ञान हामीलाई वेदबाट प्राप्त हुन्छ। यीनै ध्वनिहरुलाई आधुनिक विज्ञान तथा नासाले पनि स्वीकार गरेको छ। जसबाट यो स्पष्ट हुन्छ कि प्राचीन ऋषि मुनिहरुलाई यी ध्वनिहरुको ज्ञान थियो र यिनै ध्वनिहरुको आधारमा उनीहरुले पूर्णशुद्ध भाषालाई अभिव्यक्त गरे। अतः प्राचीनतम आर्य-भाषा जुन ब्रह्माण्डीय संगीत थीयो त्यसको नाम "संस्कृत" भयो। संस्कृत – संस् + कृत् अर्थात श्वासबाट निर्मित एवं स्वयं कृत, जुन ऋषिहरुले ध्यान लगाउनाले तथा परस्पर-सम्पर्कबाट अभिव्यक्त भयो।

कालान्तरमा महर्षि पाणिनीले नियमित व्याकरण द्वारा संस्कृतलाई परिष्कृत एवं सर्वम्य प्रयोगमा आउन योग्य रूप प्रदान गरे। पाणिनीय व्याकरण नै संस्कृतको प्राचीनतम एवं सर्वश्रेष्ठ व्याकरण हो। दिव्य एवं दैवीय गुणहरुले युक्त, अतिपरिष्कृत, परमार्जित, सर्वाधिक व्यवस्थित, अलंकृत

सौन्दर्यले युक्त, पूर्ण समृद्ध तथा सम्पन्न, पूर्ण वैज्ञानिक देववाणी संस्कृत – मनुष्यको आत्मचेतनालाई जागृत गर्ने, सात्विकतामा वृद्धि, बुद्धि एवं आत्मबल प्रदान गर्ने सम्पूर्ण विश्वको सर्वश्रेष्ठ भाषा हो। अन्य सबै भाषामा अनेकौं त्रुटि छन् तर संस्कृत भाषामा कुनै पनि प्रकारको त्रुटि छैन। यसको उच्चारणको शुद्धता यति सुरक्षित राखिएको छ कि सहस्त्र वर्ष देखि आजसम्म वैदिक मन्त्रहरुको ध्वनि एवं मात्राहरुमा कुनै किसिमको पाठभेद भएको छैन र यो केवल हामीले मात्र भनिरहेका छैनौं। विश्वका समस्त आधुनिक विद्वान र भाषाविदहरुले पनि एक स्वरमा संस्कृतलाई पूर्ण वैज्ञानिक एवं सर्वश्रेष्ठ मानेका छन्।

संस्कृतको सर्वोत्तम शब्द-विन्यास युक्ति, गणित तथा कंप्यूटर आदिको स्तरमा नासा लगायत अन्य सबै वैज्ञानिक तथा भाषाविद संस्थाहरुले पनि यस भाषालाई एकमात्र वैज्ञानिक भाषा मान्दै यसको अध्ययन तथा अनुसन्धान आरंभ गरेका छन् र भविष्यमा भाषा-क्रांतिको माध्यमले आउने समय संस्कृतको हुने भनेका छन्। अतः अंग्रेजी बोल्नमा नै ठूलो गौरव अनुभव गर्ने, "अर्थ न बर्थ गोविन्द गाई" भने झैं अंग्रेजीमा चटर्-पटर् गरेर गुब्बारा फुल्लिए सरह ढुकुरे छाति फुलाउने केहि टाई-सुटे महाशयहरु जसले संस्कृतमा दोष निकाल्छन्, तिनीहरुले अंग्रेजी दासताको दलदल बाट बाहीर निस्केर संस्कृतको वैज्ञानिकता एवं संस्कृतको विषयमा विश्वका समस्त विद्वानहरुको मत पनि जान्नु आवश्यक छ।

आफ्नो प्रसंशा गराउनका लागि "नासा" भन्ने संस्था हामीले स्थापना गरेका हैनौं। शिरमा नेपाली टोपी र घाँटीमा टाई झुन्ड्याउने लाल-बुझक्कड स्वनामधन्यहरुहो..! नासाको वेबसाईटमा गएर संस्कृतको महत्व के छ भन्ने कुरो पढ, अवगत अवश्य हुनेछ।

निक्कै लाजमर्दो कुरो हो कि नेपाली भूमिमा यस्ता-यस्ता झारपात जाग्दैछन् जसलाई अमृतमयी वाणी संस्कृतमा दोष तथा विदेशी भाषामा गुण नै गुण नजर आउने गर्दछ, त्यो पनि तब जब विदेशीहरुले संस्कृतलाई सर्वश्रेष्ठ मान्दैछन्।

अतः जब हामि आफ्ना बाल-बालिकाहरुलाई अन्य नामै नसुनेका तथा जीवनमा कुनै काम पनि नलाग्ने विषय पढाउन सक्छौं भने आफ्नो सम्वृद्धिको पहिचान संस्कृत पढाउनमा कुनै संकोच गर्नु हुँदैन। देश विदेशमा भएका कैयौं शोध तथा अनुसन्धान अनुसार संस्कृतले मानव मस्तिष्कलाई निक्कै तीव्र गर्दछ जसबाट अन्य भाषा तथा विषयहरुलाई सम्झनमा निक्कै सरलता हुन्छ। साथै यसले सत्वगुणमा वृद्धि गर्दै नैतिक बल एवं चरित्रलाई पनि सात्विक बनाउँछ। अतः सबैले यथायोग्य संस्कृत अध्ययन-अध्यापन गर्नु-गराउनु पर्दछ।

आज संसारमा लगभग ६९०० जति भाषाहरुको प्रयोग गरिन्छ। तर के तपाइले कहिले सोंच्नु भएको छ कि यी समस्त भाषाहरुको जननी को हो? अर्थात् यी भाषा जन्मनु भन्दा पहिले संसारमा कुन भाषा प्रचलित थियो? जान्नु भएको छैन पनि केहि छैन, आज यहाँ तपाईंलाई संसारको सबभन्दा पुरानो भाषाको बारेमा विस्तृत जानकारी दिइनेछ।

संसारको सबभन्दा पुरानो भाषा अर्थात् समस्त भाषाहरुको जननी हो- संस्कृत भाषा। आउनुस् जानौं संस्कृत भाषाको महत्वः-

संस्कृत भाषाका विभिन्न स्वर एवं व्यंजनहरुका विशिष्ट उच्चारण स्थान हुनुका साथ प्रत्येक स्वर एवं व्यंजनको उच्चारण व्यक्तिका सात ऊर्जा चक्रहरु मध्ये एक या एक भन्दा अधिक चक्रहरुलाई निम्न प्रकारले प्रभावित गरेर तिनलाई क्रियाशील र उर्जीकृत गर्दछः-

**मूलाधार चक्र– स्वरः** 'अ' एवं "क" वर्गको उच्चारणले मूलाधार चक्रमा प्रभाव पारेर उसलाई क्रियाशील एवं सक्रिय गर्दछ।

**स्वाधिष्ठान चक्र-स्वरः** 'इ' तथा "च" वर्गको उच्चारणले स्वाधिष्ठान चक्रलाई उर्जीकृत गर्दछ।

**मणिपूरक चक्र-स्वरः** 'ऋ' तथा "ट" वर्गको उच्चारणले मणिपूरक चक्रलाई सक्रिय एवं उर्जीकृत गर्दछ।

**अनाहत चक्र-स्वरः** 'लृ' तथा "त" वर्गको उच्चारणले अनाहत चक्रलाई प्रभावित गरेर त्यसलाई उर्जीकृत एवं सक्रिय गर्दछ।

**विशुद्धि चक्र-स्वरः** 'उ' तथा "प" वर्गको उच्चारणले विशुद्धि चक्रलाई प्रभावित गरेर त्यसलाई सक्रिय गर्दछ।

**आज्ञा चक्र-स्वरः** "ईषत्" तथा "स्पृष्ट" वर्गको उच्चारणले मुख्य रूपले आज्ञा चक्र एवं अन्य चक्रहरुलाई सक्रियता प्रदान गर्दछ।

**सहस्त्राधार चक्र-स्वरः** "ईषत्" तथा "विवृत" वर्गको उच्चारणले मुख्य रूपले सहस्त्राधार चक्र एवं अन्य चक्रहरुलाई सक्रिय गर्दछ।

यस प्रकार देवनागरी लिपिका प्रत्येक स्वर एवं व्यंजनको उच्चारणले व्यक्तिका कुनै न कुनै उर्जा-चक्रलाई सक्रिय गरेर व्यक्तिको चेतना स्तर अभिवृद्धि गर्दछ। वस्तुतः संस्कृत भाषाका प्रत्येक शब्दहरु यस प्रकारले संरचित (design) गरिएको छ कि यसका स्वर एवं व्यंजनहरुको मिश्रण (combination)को उच्चारण गर्दा यसले हाम्रो विशिष्ट ऊर्जा चक्रहरुलाई प्रभावित गरोस्। प्रत्येक शब्द स्वर एवं व्यंजनहरुको विशिष्ट संरचना हो जसको प्रभाव व्यक्तिको चेतनामा स्पष्ट परिलक्षित हुन्छ। त्यसैले भनिएको छ कि हामीले शुद्ध उच्चारणका साथ-साथ निक्कै सोंच-विचार गरेर मात्र बोल्नु पर्छ। शब्दहरुमा विशेष शक्ति हुन्छ जसको दुरूपयोग एवं सदुपयोगले स्वयंमा या अरुमा नकारात्मक या सकारात्मक प्रभाव पार्दछ। शब्दहरुको प्रयोगबाट नै व्यक्तिको स्वभाव, आचरण, व्यवहार एवं व्यक्तित्व निर्धारित हुन्छ।

उदाहरणार्थ जब 'राम' शब्दको उच्चारण गर्दा हाम्रो **अनाहत चक्र** (जसलाई **हृदय चक्र** पनि भनिन्छ) सक्रिय भएर उर्जीकृत हुन्छ। 'कृष्ण'को उच्चारणले **मणिपूरक चक्र (**नाभि चक्र) सक्रिय गर्दछ। **"ओ३म्"** को उच्चारणले शरीरका समस्त चक्रहरु सक्रिय तथा उर्जिकृत हुन्छन्।

वैदिक मंत्रहरुलाई हाम्रा मनीषिहरुले यहि आधारमा विकसित गरेका छन्। प्रत्येक मन्त्र स्वर एवं व्यंजनहरुको एक विशिष्ट संरचना हो। यिनको निर्धारित प्रक्रिया अनुसार शुद्ध उच्चारणले ऊर्जा चक्रहरुलाई सक्रिय गर्नुका साथै मष्तिष्कको चेतनालाई पनि उच्चीकृत गर्दछ। उच्चीकृत चेतनाका साथ व्यक्तिले विशिष्टता प्राप्त गर्दछ र उसले भनेका कुराहरु अटल हुनुका साथ-साथ अवश्यम्भावी पनि हुन्छन्। शायद आशीर्वाद एवं श्राप दिने आधार पनि यही हुन सक्छ। संस्कृत भाषाको वैज्ञानिकता एवं सार्थकता यसरि स्वयं सिद्ध छ।

शास्त्रीय संगीतका सात स्वर हाम्रा शरीरका सातै उर्जा चक्रहरु संग जोडिएका छन्। प्रत्येकको उच्चारणले सम्बंधित उर्जा-चक्रलाई क्रियाशील गर्दछ। शास्त्रीय राग यस प्रकारले विकसित गरिएको छ जसबाट तिनको उच्चारण र गायनले विशिष्ट उर्जा चक्रहरुलाई सक्रिय गरेर चेतना स्तरलाई उच्चीकृत गरोस्। प्रत्येक राग मनुष्यको चेतनालाई विशिष्ट प्रकारले उच्चीकृत गर्ने सूत्र हो। यिनको सही अभ्यासले व्यक्ति असीमित ऊर्जावान बन्दछ।

संस्कृत केवल स्वविकसित भाषा हैन, यो संस्कारित भाषा हो। त्यसैले यसको नाम संस्कृत भएको हो। संस्कृतलाई संस्कारित गर्ने पनि कुनै साधारण भाषाविद् नभएर महर्षि पाणिनि; महर्षि कात्यायिनि र योग शास्त्रका प्रणेता महर्षि पतंजलि हुन्। यी तीन महर्षिहरुले निकै कुशलता पूर्वक योगका क्रियाहरुलाई भाषामा समाविष्ट गरेका छन्। यही नै यस भाषाको रहस्य हो। जसरि साधारण किसिमले पाकेको दाललाई शुध्द घीउमा जीरा, मेथी, लहसुन, र हींग फुरायेर झानिन्छ भने त्यसलाई संस्कारित दाल भनिन्छ। घीउ, जीरा, लहसुन, मेथी र हींग आदि सब महत्वपूर्ण औषधि हुन्। यिनले हाम्रो शरीरका सबै विकारहरुलाई बाहिर निकालेर पाचन संस्थानलाई दुरुस्त गर्दछन्। दाल खाने व्यक्तिलाई यो थाहा नै हुँदैन कि उसले कुनै कटु औषधि पनि खाँदैछ; र अनायास नै आनन्दका साथ दाल खाँदा खाँदै यी औषधिहरुको लाभ पनि लिन्छ। ठीक यहि कुरो संस्कारित भाषा संस्कृतका साथ सटीक ढंगले मिल्छ। जुन भेद साधारण दाल र संस्कारित दालमा हुन्छ, त्यस्तै भेद अन्य भाषाहरु र संस्कृत भाषाका बीचमा छ।

संस्कृत भाषामा भएको त्यस्तो औषधीय तत्व के हो? यो कुरो विश्वका समस्त भाषाहरुको संस्कृत भाषाका साथ् तुलनात्मक अध्ययन गर्नाले नै स्पष्ट हुन्छ। संस्कृत भाषाका चार महत्वपूर्ण विशेषताहरु छन्ः-

**१. अनुस्वार (अं ) र विसर्ग (अः):-** संस्कृत भाषाको सबभन्दा महत्वपूर्ण र लाभदायक व्यवस्था हो- अनुस्वार र विसर्ग। पुल्लिंगका अधिकांश शब्द विसर्गान्त हुन्छन्, जस्तै- रामः बालकः हरिः भानुः आदि। नपुंसक लिंगका अधिकांश शब्द अनुस्वारान्त हुन्छन्, जस्तै- जलं, वनं, फलं, पुष्पं आदि।

विसर्गको उच्चारण र कपालभाति प्राणायाम दुवैमा श्वासलाई बाहिर फालिन्छ। अर्थात् जति पटक विसर्गको उच्चारण गरिन्छ, त्यति पटक कपालभाति प्रणायाम अनायास नै हुन्छ। जुन लाभ कपालभाति प्रणायामबाट हुन्छ, त्यो लाभ केवल संस्कृतको विसर्ग उच्चारणबाट प्राप्त हुन सक्छ। त्यसैगरि अनुस्वारको उच्चारण र भ्रामरी प्राणायाम एकै क्रिया हुन्। भ्रामरी प्राणायाममा श्वासलाई नासिका द्वारा छोड्दै भमराको झैं गुंजन गर्नु पर्ने हुन्छ र अनुस्वारको उच्चारणमा पनि यही क्रिया हुन्छ। अतः जति पटक अनुस्वारको उच्चारण हुन्छ, त्यति पटक नै भ्रामरी प्राणायाम स्वतः हुन्छ। जस्तै- नेपालीको एक वाक्य- "रामले फल खान्छ" यसलाई संस्कृतमा बोल्दा- "रामः फलं खादति" = रामले फल खान्छ भन्नाले काम त चल्छ तर रामः फलं खादति भन्दा अनुस्वार र विसर्ग रूपी दुई प्राणायाम एक साथ् हुँदैछन्। यही संस्कृत भाषाको रहस्य हो। संस्कृत भाषामा एउटा पनि वाक्य यस्तो हुँदैन जसमा अनुस्वार र विसर्ग नभएको होस्। अतः यो भन्न सकिन्छ कि संस्कृत बोल्नु भनेको हिंड-डुल गर्दा गर्दै योग साधना गर्नु हो।

**२. शब्द-रूपः-** संस्कृतको दोस्रो विशेषता हो शब्द रूप। विश्वका सबै भाषाहरुमा एक शब्दको एक मात्र रूप हुन्छ। तर संस्कृतमा प्रत्येक शब्दका २५ रूप हुन्छन्। जस्तै- “राम” शब्दको निम्नानुसारका २५ रूप बन्छन् - रम् (मूल धातु), रामः रामौ रामाः; रामं रामौ रामान्; रामेण रामाभ्यां रामैः; रामाय रामाभ्यां रामेभ्यः; रामत् रामाभ्यां रामेभ्यः; रामस्य रामयोः रामाणां; रामे रामयोः रामेषु; हे राम ! हेरामौ ! हे रामाः। यी २५ रूपहरुले सांख्य दर्शनका २५ तत्वहरुको प्रतिनिधित्व गर्दछन्।

जसरि पच्चीस तत्वहरुको ज्ञानले समस्त सृष्टिको ज्ञान प्राप्त हुन्छ, त्यस्तै संस्कृतका पच्चीस रूपहरुको प्रयोग गर्नाले आत्म साक्षात्कार हुन्छ र यी २५ तत्वहरुको शक्ति संस्कृतज्ञलाई प्राप्त हुन थाल्छ। सांख्य दर्शनका २५ तत्व निम्नानुसार छन्:- आत्मा (पुरुष), चार अंतःकरण (मन, बुद्धि चित्त अहंकार), पाँच ज्ञानेन्द्रियहरु (नासिका, जिह्वा, नेत्र, त्वचा, कर्ण), पाँच कर्मेन्द्रियहरु (पाद, हस्त, उपस्थ, पायु, वाक्) पाँच तन्मात्राहरु (गन्ध, रस, रूप, स्पर्श, शब्द) पाँच महाभूत (पृथ्वी, जल, अग्नि, वायु, आकाश)।

**३. द्विवचनः-** संस्कृत भाषाको तेस्रो विशेषता हो- द्विवचन। सबै भाषामा एक वचन र बहुवचन हुन्छ तर संस्कृतमा द्विवचन अतिरिक्त हुन्छ। यसमा ध्यान दिने हो भने हामीले पाउनेछौं कि यो द्विवचन अतिनै उपयोगी र लाभप्रद छ। जस्तैः- “राम” शब्दको द्विवचनमा निम्न रूप बन्छन् - रामौ , रामाभ्यां र रामयोः। यी तीन शब्दहरुको उच्चारण गर्नाले योगका क्रमशः मूलबन्ध ,उड्डियान बन्ध र जालन्धर बन्ध लाग्छन्, जुन अति नै महत्वपूर्ण क्रिया हो।

**४. सन्धिः-** संस्कृत भाषाको सबभन्दा महत्वपूर्ण विशेषता हो - सन्धि। संस्कृतमा जब दुई शब्द नजिक आउँछन् तब त्यहाँ सन्धि हुनाले स्वरूप र उच्चारण बदलिन्छ। उक्त बदलिएको उच्चारणमा जिह्वा आदिलाई केहि विशेष प्रयत्न गर्नु पर्दछ। यस्ता सबै प्रयत्न एक्यूप्रेशर चिकित्सा पद्धतिका प्रयोग हुन्। "इति अहं जानामि" यस वाक्यलाई चार प्रकारले बोल्न सकिन्छ र हरेक उच्चारणमा वाक् इन्द्रियलाई विशेष प्रयत्न गर्नु पर्ने हुन्छ।

यथाः- १- इत्यहं जानामि। २- अहमिति जानामि। ३ जानाम्यहमिति । ४ जानामीत्यहम्। यी सबै उच्चारणहरुमा विशेष आभ्यंतर प्रयत्न हुनाले एक्यूप्रेशर चिकित्सा पद्धतिको सीधा प्रयोग अनायास नै हुन्छ। जसको फलस्वरूप मन बुद्धि सहित समस्त शरीर पूर्ण स्वस्थ एवं नीरोगी हुन्छ। यीनै समस्त तथ्यहरुबाट यो सिद्ध हुन्छ कि संस्कृत भाषा केवल विचार आदान-प्रदान गर्ने माध्यम मात्र नभएर मनुष्यको सम्पूर्ण विकासको कुँजि हो। यो त्यो भाषा हो, जसको उच्चारण गर्नाले मात्र व्यक्तिको कल्याण हुन सक्छ। त्यसैले यसलाई देवभाषा र अमृतवाणी भनिन्छ।

**अमर भाषा हो संस्कृतः**

संस्कृत भाषाको व्याकरण अत्यंत परिमार्जित एवं वैज्ञानिक छ।

संस्कृत एक वैज्ञानिक भाषा हो भन्ने कुरा यसको कुनै वस्तुलाई संबोधन गरिने शब्दहरुबाट पनि थाहा हुन्छ। यसका हरेक शब्द त्यस वस्तुको बारेमा जसको नाम राखिएको छ त्यसको सामान्य लक्षण र गुणलाई प्रकट गर्दछ। यस्तो अन्य भाषामा निकै कम छ। पदार्थहरुको नामकरण ऋषिहरुले वेदबाट गरेका छन् र वेदमा यौगिक शब्द छन् र हरेक शब्द गुणाधारित छन्। यस कारण संस्कृतमा वस्तुहरुको नामले त्यसको गुणलाई प्रकट गर्दछन्। जस्तै- "मुटु" शब्द लिउँ, मुटुलाई अंगेजीमा हर्ट भनिन्छ र संस्कृत में हृदय भनिन्छ। अंग्रेजी शब्दले यसको लक्षण प्रकट गर्दैन, तर संस्कृत शब्दले यसको लक्षण प्रकट गरेर यसलाई परिभाषित गर्दछ।

**बृहदारण्यकोपनिषद ५/३/१**मा हृदय शब्दलाई अक्षरार्थ यस प्रकार लिइएको छ- **तदेतत् त्र्यक्षर हृदयमिति, हृ इत्येकमक्षरमभिहरित, द इत्येकमक्षर ददाति, य इत्येकमक्षरमिति।** अर्थात, हृदय शब्द हृ, हरणे द दाने तथा इण् गतौ यी तीन धातुहरु बाट निष्पन्न हुन्छ। **हृ** बाट हरित अर्थात, शिराहरुबाट अशुद्ध रक्त लिन्छ, **द** बाट ददाति अर्थात शुद्ध गर्नको लागि फोक्शोलाइ दिन्छ र **य** बाट याति अर्थात सारा शरीरमा रक्तलाई गति प्रदान गर्दछ। यस सिद्धांतको खोज हार्वेले सन् १९२२मा गरेका थिए, जसलाई हृदय शब्दले स्वयं लाखौं वर्ष देखि उजागर गरिरहेको थियो।

संस्कृतमा संज्ञा, सर्वनाम, विशेषण र क्रियाका विविध तरिकाले शब्द रूप बनाइन्छ जसले तिनलाई व्याकरणीय अर्थ प्रदान गर्दछन्। अधिकांश शब्द-रूप मूल शब्दका अंतमा प्रत्यय लगाएर बनाइन्छ। यसरि यो भन्न सकिन्छ कि संस्कृत एक बहिर्मुखी-अंतःश्लिष्टयोगात्मक भाषा हो। संस्कृतको व्याकरणलाई महापुरुषहरुले वैज्ञानिक स्वरूप प्रदान गरेका छन्। प्राचिन कालमा

संस्कृतलाई अनेकौं लिपिहरुमा लेखिने गरिन्थ्यो तर आधुनिक युगमा देवनागरी लिपिका साथ यसको विशेष संबंध छ। देवनागरी लिपि वास्तवमा संस्कृतको लागि नै हो, त्यसैले यसमा हरेक चिन्हको लागि केवल एक मात्र ध्वनि छ।

- देवनागरीमा १३ स्वर र ३४ व्यंजन छन्।
- संस्कृत केवल स्वविकसित भाषा हैन, यो एक संस्कारित भाषा पनि हो। त्यसैले यसको नाम संस्कृत भएको हो।
- केवल संस्कृत नै एकमात्र भाषा हो जसको नामकरण यो बोल्नेहरुको नाममा गरिएको छैन।
- संस्कृतलाई संस्कारित गर्नेहरु कुनै साधारण भाषाविद नभएर महर्षि पाणिनि, महर्षि कात्यायन र योगशास्त्रका प्रणेता महर्षि पतंजलि हुन्।
- विश्वका सबै भाषामा एक शब्दको प्रायः एक मात्र रूप हुन्छ, तर संस्कृतमा प्रत्येक शब्दका २७ रूप हुन्छन्।
- सबै भाषामा एकवचन र बहुवचन हुन्छन् तर संस्कृतमा द्विवचन अतिरिक्त हुन्छ।
- संस्कृत भाषाको सबभन्दा महत्त्वपूर्ण विशेषता हो संधि। संस्कृतमा जब दुई अक्षर निकट आउँछन् तब त्यहाँ संधि हुनाले स्वरूप र उच्चारण बदलिन्छ।
- यसलाई कम्प्यूटर अर्थात कृत्रिम बुद्धिको लागि सबभन्दा उपयुक्त भाषा मानिन्छ।
- शोध तथा अनुसन्धानबाट पाइएको छ से कि संस्कृत पढ्नाले स्मरण शक्ति बढ्छ।
- संस्कृत नै एक मात्र साधन हो जसले क्रमशः औंला एवं जिब्रोलाई लचीलो बनाउँछ।
- यसको अध्ययन गर्नेहरुलाई गणित, विज्ञान एवं अन्य भाषा ग्रहण गर्नमा सहायता हुन्छ।
- वैदिक ग्रंथहरुको कुरो छोड्नेहो भने पनि संस्कृत भाषामा साहित्य रचनाको काम कम से कम छ हजार वर्ष देखि निरंतर चलिरहेको छ।

संस्कृत केवल एक भाषा मात्र हैन, यो एक विचार पनि हो, एक संस्कृति हो र संस्कार पनि हो। संस्कृतमा विश्वको कल्याण छ, शांति छ, सहयोग छ, भाइचारा छ र वसुधैव कुटुंबकमको भावना निहित छ। अस्तु...

नमस्ते...

जयतु संस्कृतम्...!